22

# बुद्धिविनोद–प्रश्नावली

र

# त्यसको उत्तर

( प्रेस, पत्र–पत्रिका [illegible] )

प्रश्नकर्ता—पं. लेखनाथ पौड्याल्य
उत्तरदाता—नयराज पन्त



संशोधन—मण्डल

# बुद्धिविनोद-प्रश्नावली
# र
# त्यसको उत्तर

प्रश्नकर्ता- पं. लेखनाथ पौड्याल

उत्तरदाता- नयराज पन्त

मूल्य रु. २।

# बुद्धिविनोदसँग मेरो सम्बन्ध

वि. सं. १९९२ को हिउँदमा काशीमा आउँ-रगतको व्यथाले म बिरामी भएँ। काशीबाट काठमाडौँ आएपछि म केही महीना थला परेँ। पढ्न सकिनँ। मन त खाली रहँदैनथ्यो। त्यही रोगशय्यामा बुद्धिविनोदका प्रश्नका उत्तर बनाउन म लागेँ। तीन चार महीना जति बिरामी भएको थिएँ। त्यस अवधिमा केही श्लोक बनिहाले। पछि वि. सं. १९९६ मा जम्मै उत्तर लेखी कवि लेखनाथ पौड्यालजी-को घर म गएँ। उनताका कविजी वेदान्ती हुनुभएको थियो। उहाँका वेदान्तविषयका कविता तिनताका शारदामा प्रकाशित हुन्थे। उहाँका पदबन्ध अत्यन्त आकर्षक थिए। पहिले कविजीले तिनै कविताको चर्चा गर्नुभयो। पछिबाट मेरो लेख हेरी यसमा राम्रा वचार गर्नुपर्छ, अहिले यहीँ छोडेर जानुहोस्, म हेरुँला भनी उहाँले भन्नुभयो। मैले त्यसै गरेँ। केही दिनपछि जाँदा मैले हेरेँ, यो मिलेन, यो मिलेन भनी उहाँले धेरै ठाउँमा चिनो लाइदिनुभयो। मैले बनाएर फेरि लगेँ। यही क्रम धेरैपल्ट भयो। यस अवधिमा मैले निकै पुस्तक पनि हेरेँ। गङ्गाधर शास्त्रीको अलिविलासिसंलाप यसै अवधिमा मैले पढेँ। राम-दास गौडको विज्ञानहस्तामलक पनि यसै अवधिमा मैले धेरै मनन गरी हेरे। यस कामबाट मलाई निकै लाभ भयो। कविजीकहाँ सच्च्याएर लाँदाखेरि यो भएन भनी उहाँ भन्नुहुन्थ्यो। त्यस वेला त्यो कविताको संस्कार गर्दा कतै कतै उहाँले केही पद आफैँले हालिदिनुभएको छ। उहाँको हस्ताक्षर परेका कापी मसँग छँदैछन्। उहाँ कविता गर्दा कलम हातमा लिएर धेरै बेरसम्म टोलाउनुहुँदो रहेछ र पछिबाट मात्रै उपयुक्त पद हाल्नुहुँदो रहेछ भन्ने कुरा मैले प्रत्यक्ष देखेँ। मेरो मधेस जाने वेला

भयो, अहिले यहीँ छोडेर जानुहोस्, दुइ तीन महीनापछि आउनुहोला भन्ने जवाफ पनि कहिले कहिले म पाउँथेँ। कविजी मसँग कुरा गर्दा प्राय: एकलै हुनुहुन्थ्यो। कहिलेकहीँ कोठाबाटै ए बाबु, दरबार जाने वेला भएको छैन भन्ने वाक्य पनि उहाँको मुखबाट निस्कन्थ्यो। जोगीहरूसँग पनि उहाँको संपर्क रहेछ। जोगीहरूलाई पनि मैले उहाँको घरमा देखेँ। तर जोगीहरूसँग भएको संवादचाहिँ मैले सुनिनँ। एक दिन मात्र मैले उहाँको कोठामा अर्को मान्छेलाई देखेको थिएँ। ती मानिस थिए – साहिँला ज्योतिषी (पण्डितवर पद्मप्रसाद भट्टराईकी कान्छी गृहिणीका पिता)। ज्योतिषी तथा कवि दुवैलाई पासामा खूप रस रहेछ। त्यस दिन पासाका खेल, ज्योतिषीका भविष्यवाणीमै समय बित्यो, कविताविषयको चर्चा भएन। यस किसिमबाट धेरै कालको संस्कारपछि वि. सं. २००४ मा श्री ३ पद्मको शासनकालमा कविजीले मेरो लेख पास गरिदिनुभयो र आफ्नो भूमिका पनि लेखिदिनुभयो। यस कामबाट मलाई पनि लाभ भयो। किनभने जथाभावी पद हाली वृत्तपूर्ति गर्ने कामबाट म पर हट्तै गएँ।

श्रीगुरु पण्डितवर सोमनाथ सिग्द्यालले यी उत्तर राम्रोसँग हेरी उचित परामर्श दिनुभयो र अलिविलासिसंलाप पनि मलाई पढाइदिनुभयो। प्रश्न पनि आफैँ बनाऊ भन्ने उपदेश पनि उहाँले मलाई दिनुभएको थियो। तर लेखनाथजीसँग अघिबाटै मेरो संपर्क भइसकेकोले त्यसो गर्न मैले सकिनँ। मेरा मित्र साहित्याचार्य बुद्धिप्रकाश पाँडे (वि. सं. २००६ मा दिवङ्गत) ले धेरै किसिमबाट यो पुस्तकको कटु आलोचना गरी मलाई सल्लाह दिनुभयो। मैले अरू इष्टमित्रहरूबाट पनि यस विषयमा उचित परामर्श पाएको छु। नानी देवराज पौडेल (अहिले साहित्याचार्य तथा विद्यावारिधि)ले यो पुस्तक सारी छापाखानामा पुऱ्याउन हुने पारिदिए। सबैप्रति म कृतज्ञ छु।

कविजीले पास गरिदिएपछि नेपालीभाषाप्रकाशिनी समिति-

बाट पास तथा प्रकाश गराउन सो पुस्तक समितिमा लगी बुझाएँ । समितिको विशेष समितिले सो पुस्तक पास पनि गरिदियो । परन्तु किन हो, सो पुस्तक त्यस वेला छापिएन । पछि वि. सं. २०१५ मा मात्र समितिबाट सो पुस्तक छापियो । जे भए पनि लेखनाथजीको जीवनकालमै सो पुस्तक निस्क्यो । मेरो लेखा यो हर्षको विषय भयो । छापिएको सो पुस्तक लिई कविजीकहाँ म पुगेँ । लेखनाथजी प्रसन्न हुनुभयो । तरुणतपसीको विषयमा पनि लेख्ने सङ्केत उहाँबाट मैले पाएँ । तर तरुणतपसीको विचारसँग मेरो हृदय सहमत नहुनाले कविजीलाई कृतार्थ पार्न मैले सकिनँ । नेपालका ठूला कवि लेखनाथ-सँग सहमत भई प्रकाशित भएको यो पुस्तकले मेरो मनलाई केहीनकेही आनन्द अवश्य दिएको छ । यो बुद्धिविनोद प्रश्न र उत्तर पहिलो पटक छापिएको १७ वर्षपछि अहिले वि. सं. २०३२ मा जस्ताको तस्तै दोस्रो पटक छापिएको छ ।

वि. सं. २०३२ आषाढ १६ गते सोमबार नयराज पन्त

# वक्तव्य

लाखौं वर्षअघि जब मानवजातिको कुनै निश्चित भाषा थिएन त्यस वेला पनि माथि, तल, आफ्ना चारैतिरका वातावरणलाई हेरेर वा देखेर मनुष्यको मनमा नाना प्रश्नहरू उब्जिन्थे — यो के हो ? किन भयो ? कसरी आयो ? कसले बनायो ? इत्यादि । विनाउत्तर ती प्रश्नहरू नदीमा पानीको फोका झैं त्यहीं निस्कन्थे, त्यहीं अल्पन्थे, जान्थे ।

कविशिरोमणि श्रीलेखनाथज्यूले त्यस्तै प्रश्नहरूलाइ साहित्यिक रंग चढाएर श्लोकको रूपमा जनताको संमुख राख्नुभएको थियो जो तत्कालै निकै लोक प्रिय पनि भयो । परन्तु, यो सर्वमान्य कुरा हो— प्रश्न सोध्नुभन्दा उत्तर दिनु गाह्रो छ । ज्योतिषाचार्य नयराज पन्त-ज्यूले एक एक श्लोकको उपयुक्त उत्तर दिनुभएको छ । अतः यो प्रश्नोत्तर सुनमा सुगन्ध मिलेको जस्तो भएकोले श्री ५ को सरकार, शिक्षा विभागअंतर्गत नेपाली–भाषा–प्रकाशिनी–समितिले प्रकाशन गरेको छ । आशा छ, जनताले यो मिश्री मिलाएको दूध बारबार पिएर आत्मालाइ तृप्त औ परिपुष्ट पार्नेछन् ।

—भीमनिधि तिवारी

नेपाली–भाषा–प्रकाशिनी–समिति

२०१५, चैत्र ६

# मन्तव्य

धेरै काल अघी मङ्गलमूर्ति भगवान्को इच्छाले विकासोन्मुख नेपाल राष्ट्र सङ्गठित हुन थाल्यो; त्यस वेलाका सुयोग्य राजनैतिक विद्वान्हरूले उस्लाई हरतरहले सङ्गठित पनि गराये तर स्वतन्त्र नेपाल राष्ट्रको अस्तित्वका निमित्त सम्पूर्ण प्रान्तीय भाषाहरूको एकीकरण र उच्च साहित्यको पनि अत्यावश्यकता थियो, त्यसमा रघुनाथ, भानुभक्त, मोतीराम र होमनाथहरूले सरल र सरस शैलीमा रामायणादि ग्रन्थ लेखेर राष्ट्रभाषाको एकीकरण बडो योग्यतासाथ गराये ।

समाज समतलबाट उठेर क्रमशः उन्नतिको शिखरमा चढन लागेको हुनाले उस्लाई उच्च साहित्यको प्यास बढदै गयो । उस्ले चौतर्फी विद्वान्हरूको मुटु छाम्न थाल्यो, यो कुरा सारा ऐतिहासिक विद्वान्हरूले जानेकै छन् ।

४० वर्ष अघी मेरो बाल्य चञ्चल मनमा पनि यो कुराको केही झल्का पऱ्यो, तर मेरो कलममा उच्च साहित्यको आविष्कार गर्ने शक्ति नहुनाले म लाचार थियें तापनि त्यो वेला मैले योग्य विद्वान्हरूको हृदयमा साहित्य विषयक कुतकुती पैदा गर्नाका निमित्त बुद्धि विनोद नामक सानू प्रश्नावली लेख्ने साहस गरें । त्यो साहित्यिक दृष्टिले हेर्दा विशेष आदरणीय थियेन तापनि त्यस्ले त्यस वेलाको जन समाजमा यहाँसम्मको आदर पायो कि जसले गर्दा मैले त्यसलाई ७३ सालमा छपाउने प्रेरणा समेत पायें । मलाई त्यो छपाउँदा पनि शिक्षित

समाजले यस्लाई स्वीकार गर्ला वा गरोयिन भन्ने द्विविधा नै थियो तर छापिएपछि नेपाली समाजका आबाल वृद्ध धेरै जसो व्यक्तिका मुखबाट बडो श्रद्धा साथ त्यस्को उच्चारण भएको सुन्दा मलाई अत्यन्त खुशी लाग्यो ।

केही काल पछी एक दुई जनाले प्रत्येक श्लोकको उत्तर लेखेर शारदा नामक पत्रिकामा छपाये । त्यो उत्तर कस्तो थियो सो कुरा विज्ञ वाचकवर्गले जानेकै छ । अहिले नेपाल रानीपोखरी संस्कृत पाठशालाका अध्यापक ज्योतिषाचार्य पण्डित नयराज पन्तले पनि बडो परिश्रम साथ सोही मेरो प्राचीन बुद्धि विनोदको योग्य उत्तर लेखि ने. भा. प्र. समितिद्वारा मूल श्लोककासाथै छपाउने अनुमति माग्नु भएकोमा वहाँलाई म हार्दिक धन्यवादका साथै सो छपाउने अनुमति दिन्छु । प्रश्न र उत्तर साथै छापियेको हेर्न पाउँदा दर्शक वर्गलाई मिश्री मिश्रित दुग्धपानको अनुभव होला भन्ने आशा गर्छु ।

विनीत––

लेखनाथ

२००४ साल मार्ग १८ गते ठमेल ८० नं. नेपाल

सुख वा दु:खको वास्ता छोडी कर्तव्यमा रत ।
रामका पाउको भित्र रहोस् स्मरण सन्तत ॥

## निवेदन

हे मेरा भाइ, म केही बिन्ति गर्दछु सुनन
यसमा केही सार छ भने मनमा गुनन ॥ (१)
अध्यात्मविद्या भौतिकविद्या वा धर्मशास्त्रको
म कुनै विद्वान् होइनँ भाइ ! यो कुरा साफै हो ॥ (२)
शब्दकै ठीक तात्पर्य बुझ्ने न कुनै कवि हुँ
म खोजी ल्याई यो भुँडी भर्ने सामान्य जीव हुँ ॥ (३)
यसैले भाइ ! नेपालीमाका प्रसिद्ध कविको
भावुक राम्रा शब्दका शय्याबिचमा बसेको ॥ (४)
अत्यन्त गूढ प्रश्नले गर्दा मधुर कठोर
देखिने सानो यो काव्यभित्र रहेको विचार ॥ (५)
यथार्थसँग नखोलीकन आसन्न उत्तर
लेखेर हिँड्ने ममाथि पर्नन् दोषका प्रहार ॥ (६)
परन्तु साक्षात् ईश्वर हाम्रा दृष्टिले भेटिन्नन्
कल्पितमूर्ति ईश्वर भने हामीले पुजिन्छन् ॥ (७)
आसन्नमान कल्पना गरी असकृद्विधान
गरेर गर्छन् गणकहरू खेचरसाधन ॥ (८)
यसैले भाइ ! यसको पनि परीक्षा हुनेछ
भनेर मेरो कलम केही आशाले चल्दछ ॥ (९)

परीक्षाद्वारा देखिए जति अशुद्धिहरूको
संशुद्धि गर्न सङ्कोच छैन मलाई भित्रको ।। (१०)

गुण वा दोष यसमा कुनै नबुझी नलाए
अवश्य हुनन् पारखी कतै भनेर नबिर्से ।। (११)

पढी वा सुनी जसका लेख विचार व्याख्यान
यी पङ्क्ति लेखें ती सबैलाई मेरो छ प्रणाम ।। (१२)

वि. सं. १९९६ वैशाख ११ गते
महाबौद्ध, काठमाडौँ, नेपाल

नयराज पन्त

# बुद्धिविनोद प्रश्न र उत्तर

प्रश्न – कहाँ थियो वास अघी म को थियें
कसो हुँदा यो पिंजडा लिंदो भयें ।
कहाँ छ जानू कुन साथ लीकन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

( १ )

उत्तर – अव्यक्तमा वास थियो, तिमी पनि
थियौ उहीं लीन, अदृष्टले जुनि ।
लियौ, उहीं पर्दछ जानु आखिर
बोकेर आफ्नै उ अदृष्ट साँवल ।।

( १ )

प्रश्न – म वाच्य को हो कसरी कहाँ बसी
रहेछ त्यो इन्द्रिय–राजमा पसी।
चिह्नित्र आफूकन आफुले किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

( २ )

उत्तर – म–वाच्य त्यो व्यापक तत्त्व चिन्मय
संस्कारले लिन्छ शरीर इन्द्रिय।
प्रशान्त अन्तर्मुखता लिईकन
हेरे त फुर्ला कि त्यहाँ स्वयंपन ।।

( २ )

प्रश्न – स्वयं निराधारविषे टनाटन
असंख्य ब्रह्माण्ड खडा गरीकन।
जगत् जमायो कुन कर्मिले किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

( ३ )

उत्तर – असंख्य यी लोक खडा गरीकन
अनन्त लीला रटना चलाउन।
कर्मी भएथे भवचक्रको गति
चलाउँदा चिन्मय देवतापति ।।

( ३ )

प्रश्न - कदापि कत्ती नलगाइ ठक्कर
ग्रहाऽऽदिलाई दिनहूँ निरन्तर।
घुमाउने को छ खडा भईकन
तँलाइ मालुम् छ कि यो कुरा मन।।

(४)

उत्तर - परस्पराकर्षण जाल नै बुनी
ग्रहाऽऽदि घुम्छन् उनिएर फन्फनि।
जगन्नियन्ता अनिरुद्धको गुण
छ विश्वमा व्यापक शक्ति कर्षण।।

(४)

प्रश्न - निशाविषे माथि सधैं वरोपरी
अनन्त जोती गजमोतिले सरी।।
झुलीरहेका किन हो ति को हुन
तँलाइ मालुम् छ कि यो कुरा मन।।

(५)

उत्तर - विशाल छायापथ हुन् कुनै, कुनै
हुन् तारका-गुच्छ, विकारि हुन् कुनै।।
कुनै त हुन् नव्य, कुनै भ-युग्म हुन्,
प्रकाशक ज्योति सबै यिनी हुनन्।।

(५)

प्रश्न – समस्त आकाशविषे टनाटन
धरी धरी सुन्दर सृष्टि–साधन ।
भयेछ उत्पन्न कसो गरीकन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

( ६ )

उत्तर – लिएर नारायण–शक्ति चित्कण
'नारा' हिरण्याण्ड बन्यो जमीकन ।
भएर टुक्रा त्यसकै अनेकन
खडा भयो सुन्दर सृष्टि–साधन ।।

( ६ )

प्रश्न – स्वभाव धर्माऽऽदि जुदा जुदा धरी
विशाल यो विश्वविषे थरी थरी ।
कसो हुँदा जीव जमे कडोरन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

( ७ )

उत्तर – अदृष्टको बन्धनमा परीकन
वैराजदेखिन् सब जीव–सिर्जन ।
अध्यात्मवादीहरुले बताउँछन्,
प्रत्यक्षवादी अरु लर्बराउँछन् ।।

( ७ )

प्रश्न – अशेष आब्रह्म पिपीलिकातक
शरीर एकै उहि पाञ्चभौतिक ।
परन्तु भोग्याऽऽदि घटी बढी किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

( ८ )

उत्तर – अशेष आब्रह्म पिपीलिकातक
शरीर होलान् सब पाञ्चभौतिक ।
विभिन्न भै कर्म र बासनागति
विभिन्न नै छन् सब भोग्य पद्धति ।।

( ८ )

प्रश्न – झिलिक्क झिल्के बिजुलीसरी सब
तुरुन्त छोडीकन जीवनोत्सव ।
अहो ! कती जीव गए कहाँ किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

( ९ )

उत्तर – पदार्थ सारा भवमा विलक्षण
विकारमा प्राप्त हुँदै प्रतिक्षण ।
अटूट उत्पन्न विनष्ट बन्दछन्,
महर्षि सृष्टिक्रम यै छ भन्दछन् ।।

( ९ )

प्रश्न - बुढो पुरानू बदली प्रतिक्षण
नयाँ नयाँ सृष्टिविषे टनाटन।
सजाउने को छ मजा लिईकन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(१०)

उत्तर - बूढो पुरानो बदली प्रतिक्षण
नयाँ नयाँ सृष्टिविषे टनाटन।
सजाउने त्यै छ मजा लिईकन
जल्ले गरेथ्यो अघि लोक सिर्जन ।।

(१०)

प्रश्न - कती म जस्ता उहिल्यै बितीसके
कती सुतेका छन बाँचुला म के।
भनी कुनै कत्ति नआत्तिने किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(११)

उत्तर - अरूहरूको नतिजा लिईकन
चेती स्ववैगुण्य बुझी हटाउन।
विवेक आए त हटो रजस्तम
हुने थिए मानिस देवतासम ।।

(११)

प्रश्न – समस्त सृष्टि स्थितिका नियामक
विरिञ्चि, नारायण, शङ्करादिक ।
कहाँ बसेका छन गुप्त भैकन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(१०)

उत्तर – बाँधेर फुक्का मनलाइ जुक्तिले
खोज्यो भने भित्र समाधि-योगले ।
हुनन् सबै झल्झल विश्वरूपले,
ती देखिँदैनन् तर चर्म-चक्षुले ।।

(१२)

प्रश्न – अहो ! उनै जीव कुनै ति देवता
कुनै घुमेका गुहुमा यता उता ।
कहाँ गयो ईश दया–निकेतन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(१३)

उत्तर – भोग्छन् सबै जीवहरू निजार्जन,
सक्तैन कोही यसदेखि पन्छिन ।
निसर्गसिद्धान्त छ यै जगद्भर,
छँदैछ निष्पक्ष दयालु ईश्वर ।।

(१३)

प्रश्न - सबै सुखाऽऽस्वाद लिऊँ भनीकन
प्रवृत्त लाखौं तिर भैरहेछन।
तथापि देखिन्न सुखी कुनै किन
तँलाइ मालुम् छ कि यो कुरा मन।।

(१४)

उत्तर - नितान्त तृष्णा–क्षय मात्र सौख्य हो,
अनन्त तृष्णा सब दुःख–मूल हो।
लिएर तृष्णा सुख मिल्दथ्यो किन,
हुन्थ्यो कहाँ भाव अभाव मेलन।।

(१४)

प्रश्न - जहाँ दशै द्वार सदा खुला छन
अहो ! उही प्राण समीर–भाजन।
फुस्रू फुस्रू सास नसिद्धिनू किन
तँलाइ मालुम् छ कि यो कुरा मन।।

(१५)

उत्तर - चलीरहेको नअडो निरन्तर
खलाँति जस्तै छ नि यो कलेवर।
कहिन्छ त्यो स्पन्दन नै त जीवन,
समीर नै मात्र त हुँन जीवन।।

(१५)

प्रश्न – अनादि संसारविषे कुनै दिन
जतातत्तै स्त्रीजति शून्य भैकन ।
नजन्मन् केवल पुरुषै किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(१६)

उत्तर – मिली रयि प्राण दुबै बराबर
स्त्रीपुंसको भो सृजना जगद्भर ।
रय्यंशको भाव छँदाछँदै पनि
प्राणांश मात्रै कसरी हुने अनि ।।

(१६)

प्रश्न – हरेक गर्भान्तरमा पसीकन
बराबरी बालक–बालिका–गण ।
बनाउने तो गणितज्ञ को हुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(१७)

उत्तर – मिली रयि प्राण सरूप भैकन
एकत्व लिन्छन् जसमा सनातन ।
परम्पराबाट तिनै प्रजापति
स्त्रीपुंसताको सम पार्दछन् स्थिति ।।

(१७)

प्रश्न – गुट्मुट् भैकन गर्भ-जालमा
बसी कठै अञ्जलि जोरि भालमा।
कराउँदा बन्धुहरू थिये कुन
तँलाइ मालुम् छ कि यो कुरा मन॥

(१८)

उत्तर – आपत्तिमा वा सुखमा विदेशमा
स्वदेशमा वा घरमा जहाँ तहाँ।
निर्मत्सरी दीनदयालु ईश्वर-
बाहेक अर्को कुन बन्धु हुन्छ र॥

(१८)

प्रश्न – झलक्क देखी निज कर्मपद्धति
उजार भै ईश्वरको गरी नति।
वहाँ गरेको कुन हो निवेदन
तँलाइ मालुम् छ कि यो कुरा मन॥

(१९)

उत्तर – गर्दा मिची घोर कसूर पक्रिई
सुनी सबै दण्ड सजाय, जाकिई।
कराउने मूर्ख कसूरदारको
जस्तै हुँदो हो सब बिन्ति गर्भको॥

(१९)

प्रश्न – थियो जती गर्भविषे विरक्तता
गयो सबै त्यो जनमेपछी कता।
हुँदैन कत्ती पनि संझना किन
तँलाइ मालुम् छ कि यो कुरा मन॥

(२०)

उत्तर – पऱ्यो भने दुःख उसै अतासिने
गरीबलाई सुखमा सताउने।
यी लण्ठ हामीहरुले अहो ! किन
सम्झीरहन्थ्यौं अघिका कुराकन॥

(२०)

प्रश्न – परत्र यस्तो छ यसो गऱ्यो भने
यसो यसो हुन्छ भनेर देखने।
नआउने कोहि पनी यहाँ किन
तँलाइ मालुम् छ कि यो कुरा मन॥

(२१)

उत्तर – सामान्य जो हो उ त कालको घर
पुगेर फिर्दैन कसै यतातिर।
जो हो असामान्य मनुष्य त्योकन
सामान्य हामीहरु चिन्दथ्यौं किन॥

(२१)

प्रश्न – शरीर हो कारण पुण्य पापको
ढल्यो यहीं त्यो त बनो बिकामको ।
परत्रमा यो सब भोगने कुन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(२२)

उत्तर – यो भोगको साधन मात्र देह हो,
भोक्ता त सारा सुख दुःख जीव हो ।
खुनी छ जो पर्छ उही सरासर,
के भाँच्चियो लट्ठि भनेर छुट्छ र ॥

(२२)

प्रश्न – असत्य संसार असत्य देह यो
असत्यको भोग असत्य नै भयो ।
म सत्य आत्मा फिर जन्मने किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(२३)

उत्तर – संसार यो सत्य भनेर सम्झदै
मै भोग गर्ने भनि खूप तम्सिँदै ।
हिँड्छौ तिमी भित्र गमक्क गम्कँदै,
घुम्छौ यसैले भव–चक्रमा सधैं ॥

(२३)

प्रश्न – प्रमाणशाली श्रुति–शास्त्र जो छन,
अहो ! उनैमा झगडा टनाटन ।
यथार्थ के हो किन छैन मेलन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(२४)

उत्तर – नानाथरी यो अधिकारिवर्ग छ,
सबै जनालाइ उतार्नुपर्दछ ।
आभास देखिन्छ विरोधको अत:,
तात्पर्य यौटै सबको छ वस्तुत: ।।

(२४)

प्रश्न – कतै छ एकत्व कतै अनेकता
कतै सबै शून्य कतै क्रियात्मता ।
म सत्य मानूँ कसको विवेचन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(२५)

उत्तर – ती ती अवस्थान्तरमा विवेचन
सबै हुनन् यी उपयुक्त साधन ।
तथापि अद्वैत विवेकको मत
देखिन्छ राम्रो श्रुति–वाक्य-सम्मत ।।

(२५)

प्रश्न - श्रुति-स्मृती तन्त्र-पुराण- मन्थन
गरेर बोझे झगडा लिईकन ।
स्वरूप जान्यो कसले सनातन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(२६)

उत्तर - जो शास्त्रको सार छ त्यो विचारमा
विचारलाई व्यवहार-भारमा ।
जल्ले लगायो दृढता लिईकन,
स्वरूप जान्यो त्यसले सनातन ॥

(२६)

प्रश्न - जता जता दृष्टि दियो उतैतिर
कथा प्रपञ्चाऽदि अनन्त सुन्दर ।
महर्षिले जाल रचे वृथा किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(२७)

उत्तर - विचार-धारा सबको विभिन्न छ,
विचार जस्तै व्यवहार चल्दछ ।
मिल्दा सबैका व्यवहारमा तथा
सुधार गर्ने ऋषिले रचे कथा ॥

(२७)

प्रश्न – पराशर-व्यास-वसिष्ठ-जैमिनि-
शुकाऽदि जो जो पहिले भये मुनि ।
गये ति के काम गरी कहाँ छन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(२८)

उत्तर – अज्ञानले पीडित कर्म-विच्युत
मनुष्यलाई शुभ-मार्ग-दीक्षित ।
गराउँथे, ती यतिसम्म जान्दछु,
यहीँ गए भन्न म शक्ति-हीन छु ।।

(२८)

प्रश्न – जमाइ साम्राज्य बसी नृपाऽसन
प्रजा खुशी पारि हुकुं चलाउन ।
चटक्क छोडी किन ती पसे वन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(२९)

उत्तर – तोडी अहन्तामय दीर्घ बन्धन
पुगीसकेको छ असीममा जुन ।
अगाध-आनन्द-निमग्न त्यो जन
भुलीरहन्थ्यो परिपञ्चमा किन ।।

(२९)

प्रश्न – चुनेर जम्मा गरि कामिनीजन
असीम आनन्द लुटी लिनाकन।
शुकाऽऽदिको चित्त गएन हो किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३०)

उत्तर – असीम आनन्द अहो ! कता कता,
विलासिता कामुकता कता कता ।
सुस्वादु गङ्गा-जल हो कता कता,
मरीचिका–भ्रान्ति हरे ! कता कता ।।

(३०)

प्रश्न - कलत्र–पुत्राऽऽदि सधैं वरीपरी
लगाइ घेरा गफले जुलुं गरी ।
शुकाऽऽदिले काल नफालनू किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३१)

उत्तर – यो विश्व नै पुत्रसमान सम्झने
सदा उसैको हित नै चिताउने ।
ती विश्वका दिव्य विभूतिले किन
फाल्थे हरे ! काम र मोहमा दिन ।।

(३१)

प्रश्न – असत्य संसार सदैव देखिने
छ सत्य जो त्यो कहिल्यै नदेखिने ।
विचित्र उल्टो परिपञ्च यो किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३२)

उत्तर – डोरी छ साँचो तर डर्छ बालक
परेर सर्प-भ्रम त्यो अचानक ।
यथार्थमा यो सब दृष्टि-दोष हो,
यही त मायामय दीर्घ-कोष हो ।।

(३२)

प्रश्न – कहाँ छ वैकुण्ठ कहाँ छ रौरव
विचार को गर्दछ कर्मको सब ।
यथार्थमा तत्त्व छ शास्त्रको कुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३३)

उत्तर – मनै छ वैकुण्ठ, मनै छ रौरव,
स्वकर्म जाँच्ने पनि हो त्यही सब ।
निःस्वार्थता सर्वहितैषिता प्रमा
हुन् शास्त्रका तत्त्व कुरा यथार्थमा ।।

प्रश्न – प्रजा धरामा धरणी फणीशमा
फणीश पानीबिच पानि हो कहाँ ।
मिलेन विश्रान्ति जवाफ हो कुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३४)

उत्तर – यहाँ छ आधार-परम्परा जुन
त्यो हो धराको क्रम-सृष्टि-सूचन ।
भू-पिण्ड-सृष्टि-क्रमले प्रपञ्चित
धरा निराधार छ वेद-वर्णित ।।

(३४)

प्रश्न – जमाउने सृष्टि सदा चतुर्मुख
उढाउने शङ्कर सृष्टिको सुख ।
हुँदैन होला झगडा अहो ! किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३५)

उत्तर – विना कुनै नाश न सृष्टि चल्दछ,
न सृष्टिदेखिन् लय दूर बस्तछ ।
श्वास-क्रियाका गति छन् निदर्शन,
क्रिया छ एकै झगडा कहाँ किन ।।

(३५)

प्रश्न – जगद्-व्यवस्था जसमा छ सन्तत
अहो! उनै कृष्ण पराङ्गना-रत ।
कहाँ गयो उत्कट वेदबन्धन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३६)

उत्तर – सद्धर्म थामेर जगद्-व्यवस्थिति
चलाउनैमा जसको थियो मति ।
आदर्श शिक्षामय योगि-राज ती
गर्दा हुनन् के पर-कामिनी-रति ।।

(३६)

प्रश्न – घसी खरानी शिरमा जटा धरी
श्मशानमा नित्य बनी दिगम्बरी ।
लडीरहेको शिव हो अहो! कुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३७)

उत्तर – हुँदा सबै यो परिपञ्चको लय
अनन्त नानाथर वासनामय ।
रहन्छ जो चेतन-पुञ्ज वास्तव,
त्यै हो त्रयी-वेद्य दिगम्बरी शिव ।।

(३७)

प्रश्न – विलासिनी दिव्य अनन्त अप्सरा
छँदा छँदै यौवन-भार-मन्थरा ।
फसे अहल्यासित इन्द्र नै किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३८)

उत्तर – ऐश्वर्यको त्यो विकराल मार्गमा
विवेकको शस्त्र रहेन हातमा ।
भने त षड्वर्ग विपक्ष दुर्जन
के बेर मार्छन् र बलै अँठ्याउन ।।

(३८)

प्रश्न – पियेर गीताऽमृत शान्त भैकन
कुटुम्ब-हत्यातिर लाग्नू किन ।
किरीटिले तत्त्व बुझे अहो ! कुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(३९)

उत्तर – बुझेर भित्री शिव जीवको सब
अभिन्नता वा अमरत्व गौरव ।
स्वधर्म आफ्नो कुलको अड्याउन
लडे अनास्थासित धीर अर्जुन ।।

(३९)

प्रश्न – जती जगतमा छ मनुष्यको गण
उती सबैका मनु मूल–कारण ।
छँदा छँदै जाति पृथक् बने किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४०)

उत्तर – त्यो मात्स्य-दुर्नीति निकै बढीकन
टुट्ता व्यवस्था त मिली सबै जन ।
माने पिता झैँ मनुलाइ भन्दछन्,
मनुष्य सारा मनु–पुत्र होइनन् ।।

(४०)

प्रश्न – कतै महापाप छ मद्य गो–वध
कतै यही धर्म गनिन्छ मुख्यतः ।
पत्याउनू के नपत्याउनू कुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४१)

उत्तर – जो मर्त्य दैवी-प्रकृति–प्रधान छ,
त्यल्लाइ मद्याऽऽदिक उग्र-पाप छ ।
जो आसुरी संपतिले निबद्ध छ,
त्यल्लाइ त्यै सुन्दर योग्य शुद्ध छ ।।

(४१)

प्रश्न – निबद्ध एकै पतिमा वधूजन
वधू हजारौं पतिले हुने लिन ।
चलेन पत्नी-व्रतको प्रथा किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४२)

उत्तर – विलासिताको सँग अज्ञता घुसी
जम्मा भई धार्मीक बाँधमा पसी ।
विवाहको स्वच्छ मुहान मैलियो,
आदर्श सीतापति राममै रह्यो ।।

(४२)

प्रश्न – विभाग वर्णाश्रमको गरीकन
जुदा जुदा जाति खडा गराउन ।
समर्थ को हो किन यो गरेछन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४३)

उत्तर – यो लोकमा कार्य जुदा जुदा हुँदा
हुँदा अवस्थाबिच फेरि भिन्नता ।
वैराजकै अङ्ग-विकाशबाट यो
विभाग वर्णाश्रमको खडा भयो ।।

(४३)

प्रश्न - अनन्त-कष्ट-व्यय-साध्य वैदिकी
क्रिया छ जो सोहि भलो भनी सिकी ।
बडो बखेडा ऋषिले लिये किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४४)

उत्तर - क्रियाविना हुन्न विवेचनोदय,
विवेचनै गर्दछ वासना-क्षय ।
हो जन्मको साध्य समेत त्यै भनी
क्रिया चलाए ऋषिले पढी गुनी ।।

(४४)

प्रश्न - डटो जुता कोट छडी लिईकन
रवाफि भै मोज मजा उडाउन ।
खराप ठान्यो ऋषि-वृन्दले किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४५)

उत्तर - आदर्श राखेर अगाडि विश्वको
जो गर्छ उद्धार समस्त जीवको ।
गरी गरी सज्जन-दीन-तर्जन
रवाफ छाड्थ्यो नि हरे ! उही किन ।।

(४५)

प्रश्न – यती पछी हुन्छ अवश्य यो कुरा
भनेर सम्पूर्ण बुझी पुरा पुरा ।
युग-व्यवस्था गर्ने ति को हुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४६)

उत्तर – हिजो थियो यो अहिले छ यो यति
भनेर ताड्ने सब वस्तुका गति ।
महर्षि नै योपछि यो भनी स्थिति
बाँधेर गर्छन् युगको व्यवस्थिति ।।

(४६)

प्रश्न – त्रिकाल-दर्शी जगतै कँपाउने
कठै ! यही ब्राह्मण-वर्ग हो भने ।
दरिद्र कुत्तासरि आज भो किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४७)

उत्तर – सानै छँदामा उपनीत भैकन
लिएर विद्या-व्रत वा तपोधन ।
पढी गुनी स्नातक भै जगद्-हित
गर्थे र यो विप्र थिए प्रतिष्ठित ।।

(४७)

प्रश्न – महर्षिके हूँ सब हामि सन्तति
उनै पुराना छन मन्त्र-पद्धति ।
तथापि आशीष नलागने, किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४८)

उत्तर – बिर्सेर पुर्खाहरुका सबै गुण
आलस्यले लट्ठ भई बरालिन ।
लाग्दा हट्यो दूर सबै मनोबल,
रहेन केही अनि वाक्यमा बल ।।

(४८)

प्रश्न – दयालु सर्वज्ञ ठुला अनश्वर
प्रसिद्ध हाम्रा अघिका मुनीश्वर ।
कठै ! कुनै आज नपाइने किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(४९)

उत्तर – आफैं मपाईं कहलाउनैकन
हामीहरूको सब बित्छ जीवन ।
अनन्त-रत्नाऽकरमै कसैकन
मोती त मिल्दैन बिना गवेषण ।।

(४९)

प्रश्न – अनन्त बाटा बटुवा छ एक यो
विचारमा रङ्मगिदा जनम् गयो।
छँदैछ शङ्का अब कृत्य हो कुन
तँलाइ मालुम् छ कि यो कुरा मन।।

(५०)

उत्तर – उद्देश्य आफ्नो छ भने सुनिश्चित
अनन्त बाटाबिच एक निश्चित।
पाइन्छ बाटो त यहाँ दनादन,
इच्छानुसारै बुझ कृत्य-बन्धन।।

(५०)

प्रश्न – कतै कसैको मरणान्त दुर्गति
कतै भने संपतिमाथि संपति।
छ पक्षपाती सब जातिको कुन
तँलाइ मालुम् छ कि यो कुरा मन।।

(५१)

उत्तर – आफ्नै भलो सोच्न समेत बिसिँदा
लोक-व्यवस्था बिचमै बटारिँदा।
संसारको कोल घुमी घुमीकन
छन् पेलिँदै यी दुनियाँ प्रतिक्षण।।

(५१)

प्रश्न – उही कुलो खेत बिऊ सबै उही
उसै गरी रोपिदिये पनी कहीं ।
हुँदैन धान्याऽदिक चैतमा किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(५२)

उत्तर – गर्मी र पानी जब ठीक मिल्दछ,
धान्याऽदि सारा तब मात्र फल्दछ ।
जो चाहिने ठीक हिसाबमा यहाँ
मिल्दैन गर्मी जल चैत्र मासमा ।।

(५२)

प्रश्न – अगाडि अध्यात्मविषे थियो जति
थियेन की शिल्पविषे उती मति ।
बनेन होला किन रेल बेलुन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(५३)

उत्तर – आन्वीक्षिकी शिल्पकला दुवैतिर
हामी पुगेथ्यौँ उहिल्यै निकै पर ।
अचिन्त्यको गूढ रहस्य खोज्दथ्यौँ,
विमानलाई रसले चलाउँथ्यौँ ।।

(५३)

प्रश्न - नयाँ कुनै दुर्बिन यन्त्रको रति
सहाय केही नलिई ग्रह-स्थिति।
अगाडिकाले कसरी बुझ्थे हुन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(५४)

उत्तर - यष्टी घटी शङ्कु र चक्र आदि ती
लिई पुरानै सब यन्त्र-पद्धति।
प्राचीन बुझ्थे ग्रह-तारका-स्थिति,
साक्षी छँदैछन् अरू वेध-गेह ती ॥

(५४)

प्रश्न - ग्रहाऽदिको त्यो उदयास्त पारने
सुवर्णकै पर्वत-राज हो भने।
नदेखिनू उत्तरतर्फ त्यो किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(५५)

उत्तर - भूगोलको उत्तर नाभि वास्तव
कहिन्छ हेमाद्रि तथा उदग्ध्रुव।
भू-वक्रताको अवरोधले तर
हुँदैन दृग्-गोचर त्यो यतातिर ॥

(५५)

प्रश्न – नदी र नालाहरु रेलिंदा सब
समुद्र उर्लेर तुरुन्त बेढव ।
समस्त पृथ्वी नडुबाउनू किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(५६)

उत्तर – समुद्रकै वारि उठेर बर्सियो,
बगी गगी फेरि समुद्रमै पुग्यो ।
न घट्छ केही, नत बढ्छ, सर्वदा
एकै छ आय-व्यय-तुल्यता हुँदा ।।

(५६)

प्रश्न – उही छ माथी तलको नभस्तल
तथापि वृन्त-च्युत वृक्षका फल ।
नजानु माथी कहिल्यै पनी किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(५७)

उत्तर – अनन्तमा माथि कता, कता तल,
परन्तु वृन्त-च्युत वृक्षका फल ।
जो खस्तछन् भूतिर नै दनादन,
त्यहाँ त पृथ्वी-गुरुता छ कारण ।।

(५७)

प्रश्न – गडेर हेऱ्यो दुनियाँ जती जती
तरङ्ग शङ्का बढने उती उती ।
हुँदैन कत्ती पनि शान्तता किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(५८)

उत्तर – अनन्त यो विश्व अमेय-कारण,
हाम्रो छ सानो मनको विवेचन ।
आदर्श आधार नपाइँदा अज्ञ
अशान्तिकै कारण तर्क बन्दछ ॥

(५८)

प्रश्न – यसो गरेदेखि परिन्छ नेलमा
भनी बुझेकै छ तथापि जेलमा ।
परीरहेकै दुनियाँ अहो किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(५९)

उत्तर – कामादिले जोर गरी अँठ्याउँदा
वैरीहरूका छलछामले किता ।
यद्वा कसैको यसले भयो जय
भनेर जान्छन् जन बन्धनालय ॥

(५९)

प्रश्न – गडेर हे-यो दुनियाँ जती जती
तरङ्ग शङ्का बढने उती उती ।
हुँदैन कत्ती पनि शान्तता किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(५८)

उत्तर – अनन्त यो विश्व अमेय-कारण,
हाम्रो छ सानो मनको विवेचन ।
आदर्श आधार नपाइँदा अज्ञ
अशान्तिकै कारण तर्क बन्दछ ॥

(५८)

प्रश्न – यसो गरेदेखि परिन्छ जेलमा
भनी बुझेकै छ तथापि जेलमा ।
परीरहेकै दुनियाँ अहो किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(५९)

उत्तर – कामादिले जोर गरी अँठ्याउँदा
वैरीहरूका छलछामले किता ।
यद्वा कसैको यसले भयो जय
भनेर जान्छन् जन बन्धनालय ॥

(५९)

प्रश्न – जती कमायो धन धान्य संपति
दुरन्त तृष्णा लहरी उती उती ।
बढेर जाने जनमैभरी किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(६०)

उत्तर – मनुष्य ढल्क्यो पहिले जतातिर,
खिँचिन्छ त्यो आदतले उतैतिर ।
लोक–व्यवस्था सबमा यही हुँदा
ढल्कन्छ लोभैतिर लाभ सर्वदा ।।

(६०)

प्रश्न – कलत्र-पुत्राऽदि यहाँ जती छन
सबै ति थोरै दिनका भनीकन ।
बुझेपछी मुग्ध हुनू वृथा किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(६१)

उत्तर – आफै छु थोरै दिनको, अरू जन
आफ्ने लिए हुन् सब सौख्य-साधन ।
यस्तै छ हाम्रो मनुजत्व-लक्षण,
यै तर्क हो वास्तव मोह-कारण ।।

(६१)

प्रश्न – प्रिया छ जो यौवनमा विलासिनी
पछी उही डङ्किनि धैर्य-नाशिनी ।
रिसाउँछे दूर छिछिः गरी किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(६२)

उत्तर – तारुण्यको मोज मजा उडाउँदा
बन्छे पियारी तरुनी सुख–प्रदा ।
बूढो हुँदा पोइ परेर चाउरी
विरक्त हुन्छे बिनुमोज सुन्दरी ।।

(६२)

प्रश्न – जहाँ छ सम्पत्ति वहाँ सबै जन
अगी पछी लागि सधैं खडा छन ।
जगत् बिरानू धन रित्तिदा किन
तँलाइ मालुम् छ कि यो कुरा मन ।।

(६३)

उत्तर – देला कि केही म मजा उडाउँला,
जमी जमी शौकत शान राखुँला ।
यो स्वार्थले नै नरलोक धाउँछ,
थैलो हरायो कित चिन्न छोड्दछ ।।

(६३)

प्रश्न – मरेर जानेछु म एकलै भनी
यथार्थ जाहेर छँदा छँदै पनी।
अनेक टण्टा बटुली लिनू किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(६४)

उत्तर – त्यसै बसे देह अवश्य मुक्तछ,
हत्या गरी मर्नु अघोर कष्ट छ।
त्यसै हुँदा प्राण अड्याउनै पऱ्यो,
जन्म्यो कि टण्टा बटुली लिनै पऱ्यो ॥

(६४)

प्रश्न – शरीर कच्चा छ उमेर अस्थिर
नपर्खने काल सधैं छ धर्मर।
हिरिक्क व्यर्थैं सुखमा हुनू किन
तँलाइ मालुम् छ कि यो कुरा मन ॥

(६५)

उत्तर – थोरै हुनाले सुख-लाभ-साधन
हिरिक्क हुन्छन् सुखमैं सबै जन।
जे धेर पाइन्छ सदा उसैतिर,
गर्छन् उपेक्षा दुनियाँ सबैतिर ॥

(६५)

प्रश्न – तरङ्गमा रङ्मगिदा यसै म ता
अहो ! पुगीछू उहिल्यै कता कता ।
कसो गरे मिल्दछ शान्ति-साधन
बता बुझेसम्म अलीकती मन ।।

(६६)

उत्तर – तृष्णा जिते मिल्दछ शान्ति-साधन,
यो तत्त्व नै हो सब सिद्ध-साधन ।
मैले बुझेका जति जे कुरा थिए,
समग्र ती बिन्ति यहाँ चढाइए ।।

(६६)

मन – म निस्कनाले जननी तिमीकन
परेछ यो घोर अनर्थ-चिन्तन ।
मभित्र आएँ अब के छ लस्पस
थपक्क बाबासित शान्त भै बस ।।

(६७)

अलिअलि कवितामा चाख मेरो हुनाले
बलजफतसँगै वा भित्रकै प्रेरणाले ।
मुखबिच जुन आयो, चित्तले जे पऱ्यायो,
खुरुखुरु सब सोही लेखनीले उताऱ्यो ।।

इति । शुभं भूयात्